# ‘पृथ्वीनारायण शाहले नेपाल पुनः एकीकरण गरेका हुन्’ | Nagarik News

nagariknews.nagariknetwork.com/interview/114521-1484109420.html

नागरिक 27 पुस 2073 30 मिनेट पाठ

नागरिक

दैनिक

**0** SHARES

नेपाली इतिहासको खोजबिन तथा अध्ययन–अनुसन्धानमा निरन्तर क्रियाशील प्रा. दिनेशराज पन्त नेपाल प्रज्ञा–प्रतिष्ठानका सदस्य पनि हुन् । उनको ‘पृथ्वीनारायण शाहका पत्र’ नामक 1509 पृष्ठ लामो ‘पत्रसंग्रह’ बजारमा आउने क्रममा छ । नेपालका कतिपय इतिहासको गलत व्याख्यालाई संशोधनका माध्यमबाट उनले आफ्ना पिता नयराज पन्तको प्रत्यक्ष शिक्षादीक्षाकै प्रभावस्वरूप अघि बढाउँदै आएका छन् । सकारात्मक या नकारात्मक जे भए पनि इतिहास बंग्याउनु गलत हो र त्यसलाई यथार्थमै अध्ययन गर्नुपर्ने उनको राय छ । पन्तसँग पृथ्वी जयन्ती र नेपाल एकीकरणको सेरोफेरोमा नागरिकका गुणराज लुइँटेल र प्रकाश तिमल्सिनाले गरेको कुराकानीको सारः

---

**पृथ्वी जयन्ती केही वर्षदेखि मनाउन छाडियो । पृथ्वीनारायण शाहलाई सम्झनुपर्ने कारण के देख्नु हुन्छ ?**

पृथ्वी जयन्तीमा बिदा दिने–नदिने विषयलाई तपशीलमा राख्न सकिन्छ । हरेक कुरामा बिदा दिइरहेको प्ररिप्रेक्ष्यमा बिदा दिन हुने पृथ्वी जयन्तीमा किन दिइएन भन्ने बिषय टड्कारो हो । उनलाई सम्झनुपर्ने कारण धेरै छन् । मुख्य कुरा आजको नेपाल र नेपालीको पहिचान उनकै योगदान हो । अभिलेखका आधारमा भन्न सकिने पहिलो प्रामाणिक काल लिच्छवीकाल हो, चिनियाँ यात्रीहरूको वर्णन, संस्कृत वाङ्मय, कौटिल्य अर्थशास्त्रको आधारमा लिच्छवीकालको नेपालको आकार पनि झण्डैझण्डै अहिलेको जत्रै थियो । त्यसको अर्थ ठ्याक्कै मेचीदेखि महाकालीसम्म र हिमालदेखि तराईसम्म भन्ने होइन, लगभग यत्रै थियो । क्षेत्रफलको हिसाबमा यत्रै नेपाल पहिला नै थियो भन्ने कुरा धेरैलाई थाहा छैन, थाहा पाउने केहीले पनि त्यसलाई घुमाउने गरेका छन् । लिच्छवीकालपछि नेपाल क्रमशः टुक्रिन थाल्यो । लिच्छवीकालदेखि नै केन्द्र भने काठमाडौं उपत्यका थियो । पश्चिम 1 नम्बर नुवाकोटसम्म राज्य रहँदा पनि त्यही थियो ।

> पृथ्वीको पालासम्म गोरखा जन–धन सबै हिसाबमा कमजोर राज्य हो, बलियो होइन । 1799 चैत 25 गते राजा भएपछि मात्रै नेपाल एकीकरणमा योजनावद्ध तरिकाले अघि बढे । मैले पछिल्लो समयमा एकीकरण होइन, पुनः एकीकरण गरेका हुन् भन्ने गरेको छु ।

नेपालको दक्षिणपूर्वी भेगमा नान्यदेवले खडा गरेको सिम्रौनगढ राज्य र पश्चिमउत्तर भेगमा नागराजले खडा गरेको सिञ्जा राज्य थियो । त्यो पनि टुक्रिँदैटुक्रिँदै विक्रमको 18औँ शताब्दीसम्म पुग्दा मेचीदेखि महाकालीको भेगमा 52 वटा भन्दा बढी राज्य हुन आए । गोरखा राज्यचाहिँ 1616 भाद्र 25 गते लमजुङका राजकुमार द्रव्य शाहले खडा गरेका हुन् । पृथ्वीनारायण शाहको पालाअघिदेखि नै राज्य बढाउने चलन थियो । पूर्ण शाहले पनि केही राज्य बढाए, छत्र शाहले उद्योग गरे तर उनको शासनकाल छोटो भयो । राम शाहले धेरै राज्य बढाए, पृथ्वीनारायणका पिता नरभूपालले पूर्वबाट नुवाकोट जित्न र पश्चिमपट्टि तनहुँका राज्य जित्न उद्योग गरे, असफल भएर विक्षिप्त हुन पुगे । तर, पृथ्वीको पालासम्म गोरखा जन–धन सबै हिसाबमा कमजोर राज्य हो, बलियो होइन । 1799 चैत 25 गते राजा भएपछि मात्रै नेपाल एकीकरणमा योजनावद्ध तरिकाले अघि बढे । मैले पछिल्लो समयमा एकीकरण होइन, पुनः एकीकरण गरेका हुन् भन्ने गरेको छु ।

## पुनः एकीकरण भन्नाले के बुझ्ने ?

पहिलादेखि नै नेपाल ठूलो थियो, बीचमा टुक्रन थालेर विभिन्न राज्य बनेको हो, त्यसैलाई पृथ्वीनारायण शाहले एकीकरण गरेका हुन् । यही कारण मैले पुनः एकीकरण भन्ने शब्द प्रयोग गरेको हुँ ।

## पृथ्वीनारायणको इतिहासलाई ठीक ढंगले बुझाउने काम नभएको हो ?

शाह वंश आएपछि पृथ्वी नारायणको महŒव त उनकै जेठा छोरा प्रतापसिंह शाहले नै बुझेनन् । मल्लकालमा बाबुपछि जेठा छोरा नै राजा हुने भन्ने थिएन, जसलाई मन पर्छ, त्यसलाई दिने चलन थियो । बाबु मरेपछि सबैलाई राज्य दिइन्थ्यो, त्यसमा बलियो र चलाखले अरूलाई गुमराहमा पारेर आफू शासन चलाउँथ्यो । त्यो परम्परा पृथ्वीनारायणले कायम गर्न सकेनन् । दिव्योपदेशमा नै भनिएको छ– 'बुढा मरै, भाषा सरै भनि भन्छन्, तिमीहरू सबैछेउ सुनाइ गयाको भया, तम्रा सन्तानलाई सुनाउनन् र तम्रा सन्तानले हाम्रा सन्तानलाई सुनाउंनन्, यो राजे थामी षानन् ।' यसले के देखाउँछ भने उनलाई आफ्ना सन्तानको माया पनि थियो, तर मेरो जेठो छोरो योग्य छैन, यो तन्त्रमन्त्र र मोजमज्जामा भुलेको छ भन्ने महसुस थियो । उनका कान्छा छोरा बहादुर शाहले धेरै राज्य बढाए, बुहारी राजेन्द्र लक्ष्मीले केही गरिन। रणबहादुर शाह त बौलाएर 23 वर्षमै म बूढो भएँ भनेर जोगी भए, तर फेरि मुसलमान भित्राएर असमयमै ज्यान फाले । महेन्द्रले अलिकति गरे, तर उनका अरू सन्तानले राम्रो गरेको भए यो खराबी आउँदैनथ्यो कि भन्ने लाग्छ ।

## आजको सन्दर्भमा नयाँ पुस्ताले पृथ्वीनारायणलाई कसरी हेर्ने वा उनको योगदानलाई कसरी सम्झनु पर्छ ?

नेपाल चाहिँदैन भन्ने हो भने पृथ्वीनारायणलाई जति गाली गरे पनि भयो । किनभने, आज कमलादीको मान्छे कुपन्डोल आधा घन्टामा पुग्छ । आजभन्दा 250 वर्षअगाडि त्यो सम्भव थिएन । भक्तपुरको राजालाई काठमाडौँ वा पाटनको राजासँग रिस उठयो भने बिस्केट जात्रामा गएका बेला कुटेर पठाएको बयान पाइएको छ । काठमाडौँका राजालाई रिस उठ्यो भने पशुपतिमा सत्बिज छर्न आउँदा आक्रमण भएको छ, पाटनको राजालाई रिस

उठ्दा रातो मच्छिन्द्रनाथको जात्रामा कुटपिट गरेर पठाइएको बयान पाइएको छ । हामीले अहिले पूर्व मेचीदेखि पश्चिम महाकालीसम्मको ऐश्वर्य भोग गर्न पाएको त पृथ्वीनारायणको पालादेखि मात्र हो, उनको एकीकरण अभियानपछि हो । त्यो त्यसअघि कुनै नेपालीका लागि त्यो सम्भवः थिएन । पृथ्वीनारायणको ठाउँमा त्यो काम अरूले पनि गर्न सक्थे, गरेको भए त त्यसलाई नै मानिन्थ्यो, तर गरेनन् । त्यसकारण पृथ्वीनारायणको निन्दा गर्नु जरुरी छैन । यसको मतलब उनी सर्वगुण सम्पन्न थिए भन्ने पनि होइन ।

> मैले अनुसन्धान गर्दा 1822 चैत 3 गते कीर्तिपुर जितेका रहेछन्, त्यही महिनाको 27 गते नाक–कान काटेका रहेछन् । त्यो उनले लुकाएका पनि थिएनन्, तर यहाँ केही विद्वान्ले लुकाउने काम गरी देवत्वकरण गर्न खोजे । त्यतिबेलाको युद्धको स्थिति र चरित्र नै त्यस्तो खालको थियो । अहिले सम्झँदा चाहिँ त्यसो नगरेको भए हुन्थ्यो भन्ने मात्रै हो ।

## उनका नकारात्मक कुरा चाहिँ के देख्नु हुन्छ ?

उनी मानिस हुन्, मानिसका कमजोरी हुन्छन् । युद्धका क्रममा उनीबाट निकै कमजोरी भएका छन् । जयन्त रानाको छाला पृथ्वीनारायणले काडेकै हुन् । भनिन्छ– पृथ्वीनारायणले नाककान काटेका होइन । वास्तवमा उनले काटेकै हुन् । त्यो उनी लुकाउन पनि चाहन्थेनन्, त्यो बेला उनले लुकाएका पनि होइनन् । पृथ्वीनारायणका दरवारिया कवि ललिता बल्लभले पृथ्वीन्द्रवर्णोदयमा 'प्रच्छिद्वय नासा दिकमं कीर्तिस्वरूपमं द्विष' भनेर लेखेका छन् । पछि मैले अनुसन्धान गर्दा 1822 चैत 3 गते कीर्तिपुर जितेका रहेछन्, त्यही महिनाको 27 गते नाक–कान काटेका रहेछन् । त्यो उनले लुकाएका पनि थिएनन्, तर यहाँ केही विद्वान्ले लुकाउने काम गरी देवत्वकरण गर्न खोजे । त्यतिबेलाको युद्धको स्थिति र चरित्र नै त्यस्तो खालको थियो । अहिले सम्झँदा चाहिँ त्यसो नगरेको भए हुन्थ्यो भन्ने मात्रै हो ।

## अहिले पृथ्वीनारायणलाई नेवार समुदायका केही व्यक्तिले अहिले बढी आलोचना गरेको त्यही कारण हो ?

त्यसमा दम छैन । पृथ्वीनारायणले काठमाडौँमा विजय हासिल गरेपछि फर्केर गोरखा राज्यलाई गुल्जार गरेनन्, चाहेको भए उनले त्यो गर्न सक्थे । त्यतिबेला प्रधानमन्त्री नदिएको हो, तर सचिवहरू सबै नेवार नै थिए । राजदरवार चलाउने सबै नै नेवार, नेवारको जनसंख्या कति छ र कति फाइदा लिएको छ अनुपात हेरेर कल्पना गर्न सकिन्छ । जातजातिमा सबैभन्दा पीडित भनेको तामाङ समुदाय हो, काठमाडौं वरपर बसेर पनि उनीहरूलाई पिपाभन्दा माथ्लो पद दिइएन । तामाङलाई त भारतीय सेनामा पनि लिइन्नथ्यो न त ब्रिटिस गोर्खामा । तामाङहरू थर फेरेर जागिर खान्थे । मल्लहरूको देवी कुमारी पुजेर, काठमाडौँको रहनसहन र रीतिथितिलाई नबिगारी पृथ्वीनारायण बसे । उनले काठमाडौँको धर्मसंस्कृतिमा कुनै हस्तक्षेप गरेनन् ।

## पृथ्वीनारायणले पादरी पनि लखेटेको भनिन्छ, के थियो वास्तविकता ?

मल्लकालमा पादरीहरू काठमाडौँ आउन पाएका थिए, उनीहरूको इज्जत नै गरिएको थियो । पृथ्वीनारायणले पनि सुरुमा त तिनलाई राम्रै व्यवहार गरे । पृथ्वीनारायणका कान्छा भाइ सुरप्रताप कीर्तिपुरमा लड्दा आँखामा चोट लाग्यो, त्यसको उपचार तिनै पादरीहरू (माइकल एन्जोलेहरू)ले नै गरिदिए । जब 1824 मा तिनै पादरीमार्फत् अंग्रेज शासक किन्लक आउन थाले, त्यसपछि भने पृथ्वीनारायण झस्के । अब यी पादरीलाई यहाँ राखेका

खण्डमा राज्य नै जान्छ भन्ने शंका उनको मनमा पऱ्यो । धर्मका आवरणमा पादरीहरू राज्य खोस्न आएको चाल पाएपछि तिनलाई निकाला गरेका हुन्, नत्र उनीहरूको इज्जत नै गरिएको थियो ।

## शाहवंशीय राजतन्त्रमाथि किन सधैँ प्रहार भइरहेको भन्ने लाग्छ ?

कौटिल्यको अर्थशास्त्रमा शासकहरूलाई यसरी तालिम दिनु, योयो कुरा सिकाउनु भन्ने उल्लेख छ । द्वैराज्य, बहुराज्य, गणतन्त्र र यसका पनि भेद उल्लेख गरेर सबैभन्दा उत्तम राजतन्त्र ठीक हो भन्ने निष्कर्षमा कौटिल्य पुग्छन् । राजतन्त्र कुन ठाउँमा बेठीक हो भने बालक राजा भयो भने, पागल राजा भयो, मुर्ख राजा भयो भने बेठीक हो, नत्र राजा ठीक हो भन्ने कौटिल्यको मत छ । शाहवंशीय राजतन्त्रमा प्रतापसिंह तन्त्रमन्त्रमा, रणबहादुर उमेरमा नै जोगी भए भन्दै भोगी भएर मरे, गिर्वाणयुद्धलाई अतिक्रमण गरेर राजा बनाइयो । यस्तै घटना धेरै भएका छन्, राजतन्त्रमा योग्य पद्धति नै चल्न सकेन । शाहकालभरिको ज्ञान नै गरिमायुक्त भएन् । जो बुद्धिमत्ता पृथ्वीनारायणमा थियो, त्यो अरूमा भएन । त्यसैले पनि अरू राजाभन्दा बढी उनी कहलिन पुगे । सत्य के हो भने, पृथ्वीनारायण नभएका भए नेपाल भन्ने मुलुक नै हुँदैनथ्यो, नेपाल रहन उनको ऐतिहासिक योगदान छ । किनभने, त्यतिबेला मुसलमानी शक्ति घट्दै थियो र अंग्रेजहरूको शक्ति बढ्दै थियो । आज स्वतन्त्र भई नेपाली भनी जुन शीर तपाईं–हाम्रो उठेको छ, त्यो उनैको योगदान हो, उनको जति योगदान नेपालमा कसैको पनि छैन ।

> अहिले हरेक वर्ष कात्तिक 24 गते गढीमा विजयोत्सव मनाइन्छ । तर, मेरो अनुसन्धानले त्यो मिति गलत भन्ने देखाएको छ । खासमा 1824 आश्विन 15 मा हो, यसबारे जगदीश घिमिरेले पनि लेखेका छन् । उनैले बसाएको पुनः एकीकरणमा जगमा यी सब काम भएका थिए । उनले अंग्रेजलाई समेत पराजित गरी नेपाललाई सधैँ स्वतन्त्र र अडिग रहेको अलग्गै इतिहास बनाउन योगदान गरे ।

## पृथ्वीनारायण नभएको भए, नेपाल अंग्रेजको हातमा जान्थ्यो, जसरी भारत गयो ?

अवश्य । त्यसमा सिन्धुलीगढीको युद्ध पनि निर्णायिक छ, अहिले हरेक वर्ष कात्तिक 24 गते गढीमा विजयोत्सव मनाइन्छ । तर, मेरो अनुसन्धानले त्यो मिति गलत भन्ने देखाएको छ । खासमा 1824 आश्विन 15 मा हो, यसबारे जगदीश घिमिरेले पनि लेखेका छन् । उनैले बसाएको पुनः एकीकरणमा जगमा यी सब काम भएका थिए । उनले अंग्रेजलाई समेत पराजित गरी नेपाललाई सधैँ स्वतन्त्र र अडिग रहेको अलग्गै इतिहास बनाउन योगदान गरे ।

## उनका सन्तान र उनीमा धेरै फरकपना देखिन्छ, यस्तो किन भयो ?

पहिलापहिला भक्तपुर, काठमाडौँ, ललितपुरबीच युद्ध हुन्थ्यो, त्यहाँ जित–हार त हुँदैनथ्यो, तर मूर्ति चोरेर ल्याउने काम गरिन्थ्यो । प्रताप मल्ले भक्तपुरबाट मूर्ति चोरेर ल्याएको भेटिएपछि मैले सम्भवतः 'पहिलो मूर्तिचोर राजा' भनेर उनलाई भनेको छु । तर, पृथ्वीनारायणले त्यसो गरेनन् । पृथ्वीनारायणले गोरखा सजाउने काम त गरेनन्, काठमाडौँकी शाक्य कुमारीको टाउकोमा ढोगेर बसे, यताको रीतिरिवाज सबै मानेर बसे । यसको मतलब उनले नेवारलाई माया गरे, मगरलाई हेलाँ गरेर, गुरुङलाई अगाडि आउन नदिने भनेर त्यसो गरेका होइनन् । उनी राजनीति चेत भएका शासक थिए ।

## राजनीतिक चेत भएको विषय थप कसरी पुष्टि गर्न सकिन्छ ?

केही गोर्खाली पण्डितले पृथ्वीनारायणलाई 'हजुरले मित्ताक्षरा सुन्नुप¥यो' भनेछन्, त्यो याज्ञवल्क्य स्मृतिको टीका हो । त्यो गोरखामा नपाएपछि तनुहँबाट ल्याएर सुनाएछन् । 1–2 पृष्ठ पढेर सुनाएलगत्तै पृथ्वीनारायणले रोक भनेछन् । किन भनेर सोध्दा उनको जवाफ थियो– 'यहाँ यसो गरे पाप, उसो गरे धर्म भनेर लेखेको रहेछ, मलाई त अनेक कलबल र छल गरेर राज्य जित्नुपरेको छ, यो सुन्दा मेरो राज्य बढाउने उद्देश्यमा विचलन आउँछ, म सुन्दिनँ ।' सुरुमै उनी राज्य बढाउने मनस्थितिमा थिए, जब अंग्रेज आउने र राज्य हडप्ने देखे, त्यसपछि मात्रै नेपाल एकीकरण अभियानमा लागेका हुन् । त्यसको प्रमाण पनि मसँग छ ।

**कस्तो प्रमाण हो त्यो ?**

त्यसअघि यक्ष मल्ल र मुकुन्द सेनले पनि राज्य विस्तारको अभियान चलाएका हुन्, तर उनीहरूले आफ्नो राज्य भन्ने सम्झे । तर, पृथ्वीनारायणले गाभेको राज्य बाँडेनन्, माग्नेको विरोध पनि गरे जबकि उनका भाइहरूले पृथ्वीनारायणसँग राज्य मागेका थिए । तर, उनले दिँदैदिएनन्, बरु बढाउँदै गए ।

**तराईलाई औपनिवेशिक बनाइयो भनेर अहिले आवाज उठेको छ, त्यस्तो केही हो र ?**

तराईमा अहिले अंग्रेजलाई एकोहोरो दोष दिन्छन्, यथार्थ त्यस्तो होइन । मूलतः तराईभन्दा पनि अझ दक्षिणका अबधका वादशाहहरूको जग्गा नै तराई हो, त्यो जग्गा कमाउने काम हाम्रा सेन राजाहरूले गरेका थिए । उक्त जग्गाधनी अबधका वादशाह हुन्, सेन त मोहीमात्रै हुन् । पृथ्वीनारायण शाहको ससुराली मकवानपुर, हहिहरपुर गढी भएकाले उनीहरूले पर्सादेखि लगभग जनकपुरसम्मका जग्गाजमिन कमाउँथे । त्यो कमाइपछि केही पैसा तथा हात्ती करको रूपमा सेनहरूले तिरेका पनि छन् ।

**त्यस्तो कर कसलाई बुझाइन्थ्यो ?**

भारतका नवाव, अबधका वादशाहलाई सेनहरू कर बुझाउँथे । किनकि, भारतका नवावहरूले तराईको भूभागमा कब्जा जमाइरहेका थिए । पछि किन्लकले तिनलाई पराजित गर्दैगर्दै सिन्धुलीगढीसम्म जित्दै आए, त्यो कर अब अबधका नवाव र वादशाहलाई नदिएर किन्लकलाई बुझाउन थालियो । पृथ्वीनारायण पनि तराईमा लड्न गएनन्, सकिन्न भन्नेमा उनी थिए, किनकि उनी आफै पनि सधैं भन्थे– 'जाईकटक नगर्नू, झिकीकटक गर्नू ।' किन्लक, तीन–चार वर्ष त्यहीं अड्डा जमाएर बसे, त्यही क्रममा उनलाई मलेरिया पनि लाग्यो । रोग पनि लाग्ने, आम्दानी पनि नहुने देखेपछि सन्धि गरेर तराईका भूभाग नेपाललाई दिए ।

**त्यसो भए पृथ्वीनारायणको पालामा तराईमा कुनै राज्य थिएनन् ?**

हो, कुनै पनि राज्य थिएन । राजा जनकको पालामा विदेह राज्य थियो । 12औं शताब्दीमा सिम्रौनगढ राज्य थियो, काठमाडौंमा तीनवटा मल्ल राज्य थियो, पूर्वमा चौदण्डी र विजयपुर थिए, किरातीले राज्य थियो भनेर दाबी गरे पनि ती गाउँ मुखियाभन्दा ठूला हैसियतमा थिएनन् । तराईमा कुनै स्वतन्त्र राज्य थिएन । सिम्रौनगढमा भएको राज्य पनि 1381 मा गयासुद्दिन तुगलकले आक्रमण गरेर ध्वस्त पारिदिइसकेका थिए, त्यसको पनि कुनै अस्तित्व थिएन । न त्यहाँ कुनै आम्दानीको स्रोत थियो, न त कसैको आशा नै । बरु औलोजस्ता रोगका कारण तराई बस्तीविहीन अवस्थामा थियो । एकीकरण अभियानपछि नै ती सबै जोडेर नेपालमा गाभेर तराईलाई सर्वसम्पन्न बनाउँदै लगिएको हो ।

**त्यो एकीकरण अभियान कताकता पुग्यो ?**

राष्ट्रकवि माधव घिमिरेले काँगडासम्म भनेर लेखेका छन् । त्यहाँ मात्रै होइन, त्यसको एउटा किल्ला छाडेर भण्डैझण्डै रावी नदीको किनारसम्म, चम्पा नदीसम्म पुगेका थियौँ । हिमालको पाँच खण्डमध्ये अरुणाचल, कुमाउ, गढवाल र सिमला पनि नेपालकै थियो, काश्मिरचाहिँ टेक्नै लागेको थियो । अंग्रेजका बन्दुक–तोपका तुलनामा नेपालका हतियार आकाश–पताल फरक थियो । 1871 सालसम्ममा उनीहरू थप आधुनिक हुँदै गए, हामी कमजोर ।

**त्यसो त सिञ्जा राज्य पनि कम शक्तिशाली थिएन भनिन्छ, के थियो खासमा ?**

तत्कालीन अवस्थामा सिञ्जा सबैभन्दा बलियो थियो, त्यसले गोरखासम्म राज्य गर्‍यो । नुवाकोटमार्फत् काठमाडौँ खाल्डोमा पनि आएर बराबर कर उठाउने काम त गर्‍यो नै, चीनको स्वशासित क्षेत्र मानसरोबर पनि सिञ्जा राज्यभित्रै पर्थ्यो । उत्तराखण्डको कुमाउ–गढवाल राज्य पनि सिञ्जाभित्रै थियो । त्यो बेलाका राज्यहरूमध्ये सबैभन्दा शक्तिशाली सिञ्जा नै भएको देखिन्छ । त्यसैले पनि होला, जंगबहादुरको पालामा लेखापढी भएको एउटा कागज भेटेको थिएँ, ‘तिमीहरू हिमालपारिको जग्गा लेऊ, हामीलाई मानसरोवर देऊ’ भनेर प्रस्ताव गरेका रहेछन् । तर, तिब्बतीहरुले मानेन । भनेछन्– हाम्रो भूमि साट्ने चलन छैन । त्यसपछि त्यो त्यतिकै रह्यो ।

**अध्ययन संस्कृति अघि नबढ्नाले विषयवस्तु बुझ्न नसकी नेपाल पछि परेको हो कि ?**

मलाई पनि त्यस्तै लाग्छ । नेपालमा रणबहादुरकी आमा र बहादुर शाहबीच लडाइँ चलिरहँदा उता 1840 मा भारतको अनुसन्धान गर्ने भनेर रोयल एसियाटिक सोसाइटी खोलिसकेका थिए । कौटिल्यको अर्थशास्त्रमा भनिएको छ– प्राज्ञः शूरमतिसन्दते अर्थात् बुद्धिमानले सुरोलाई ठग्छ । जस्तो कि, बडाकाजी अमरसिंह सुरा हुन्, 1872÷73 मा अंग्रेजसँग त्यत्रो लडाइँ चल्यो, त्यसको एक वर्षअघिसम्म अक्टरलोनीका छोरासँग आफ्नो छोराको मित लगाएर काश्मिर जित्ने अनि आधाआधा बाँडेर राज्य गर्ने उद्देश्य राखे । राजाहरू महामुर्ख हुनुका कारण उनीहरुले पढ्ने काम नै नगर्नु हो । तर, पृथ्वीनारायण भने अजीवका निस्के । जंगबहादुर सही गर्न पनि जान्दैनथे, तर राज्य अजीव तरिकाले चलाएर देखाए । उनीहरुलाई भगवान्को कृपा थियो भनेर बुझौँ ।

**नेपाल एकीकरणको प्रक्रियामा समस्या देखिएको छ, किन यस्तो भयो ?**

पहिला नै चार जात छत्तीस वर्णको भनेर उल्लेख गरेका थिए । उनले सबैलाई समान द्दष्टिकोणले हेरेर जिम्मेवारी पनि बाँडफाँट गरे, त्यो काठमाडौँका शक्तिपिठहरू अध्ययन गर्दा देखिन्छ–बुझिन्छ नै । अति गर्नेहरू यहाँ बढी छन्, बंग्याउने विद्वान्हरू पनि छन्, तर पृथ्वीनारायणबाट आजको पुस्ताले धेरै कुरा सिक्नुपर्छ । आजको नेतृत्वले पनि सिक्नुपर्छ, उनको राजनीतिक चेत र शासनशैली कस्तो थियो भन्ने कुरा पनि बुझ्नुपर्छ ।

**दक्षिणी सीमाप्रति लक्षित गर्दै पृथ्वीनारायणले बोलेका थिए, त्यो अहिले पनि उत्तिकै सान्दर्भिक छ होइन ?**

त्यो तत्कालीन अंग्रेजहरुलाई हेरेर भनेका हुन् । उत्तरको चीनसँग सम्बन्ध दरिलो बनाउनु, तर दक्षिणमा अंग्रेज छ, त्यो महाचतुर छ, बलछल गरी पनि एकदिन आउनेछ । त्यसै सन्दर्भमा ‘जाइकटक नगर्नू, झिकीकटक गर्नू’ भनेका हुन् । 1831 मा उनले यो उपदेश दिएका हुन् ।

**अंग्रेजको शैलीमा अहिले हिन्दुस्तान पनि आयो हैन त ?**

संस्कृतमा एउटा भनाइ छ– अतिपरिचयाद्ववज्ञा अर्थात् धेरै परिचय भए पनि हेलाँ हुन्छ, अहिले दक्षिणको सन्दर्भमा भएको पनि यही हो जस्तो लाग्छ । तर, धेरै कुरा भने आफैंमा भर पर्छ । भारतले रक्सौल, जोगबनी, रुपैडियाको नाकासम्म रेल ल्याएको नेपालीलाई सुविधा दिन हो र ? नेपालको काठ उता लैजान ल्याएको हो । त्यसलै पहिला आफू बलियो हुनुपर्छ । उता, उत्तरी चीनले पनि हामीलाई पूर्णसहयोग गरेको छ भन्ने पनि होइन किनभने तातोपानी नाका अझै पनि खोलेको छैन । उसको नाकाबन्दी अझै जारी छ । त्यसैले पहिला नेपाली बलियो हुनुपर्छ, हामी कसरी बलियो बन्ने भन्ने कुरामा पृथ्वीनारायणका क्रियाकलापबाट यो अवसरमा धेरै कुरा सिक्न सकिन्छ ।



प्रकाशित: 27 पुस 2073 10:22 बुधबार